

क्वयेर युथ ग्रुप
Queer Youth Group

दर्ता नं : २४४९३५/०७७/०७८
स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

**नेपाल संवत् ११४१ चौला १७**
**२०७७ चैत २२ गते**

Ref. No. चलानी नं ०७१/०७७/७८
Date मिति २०७७/१२/२२
PN पस 2

श्री सचिवज्यू,
राष्ट्रिय मानव अधिकार आयोग,
ललितपुर।

**विषय : सिफारिस गरिपाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा पूर्वाञ्चाल विश्वविद्यालयको कानून संकायको पाठ्यक्रममा समयौनिकता (Homosexuality) लाई अप्राकृतिक मैथुन अन्तर्गत पठन पाठन गराइने सम्बन्धमा यस आयोगको ध्यानाकर्षण गर्न चाहन्छौँ। नेपालको संविधानले सबैलाई समानताको हक सुनिश्चित गरेको छ। विश्व स्वास्थ्य संगठनले सन् १९९० मा र २०६४ सालमा सुनिलबाबु पन्त विरुद्ध नेपाल सरकारको फैसलमा समयौनिकता (Homosexuality) प्राकृतिक रहेको ठहर गरिसकेको छ। सर्वोच्च अदालतका फैसलाहरू तथा नेपालको संविधान एवं अन्तर्राष्ट्रिय कानूनहरूले पनि समयौनिक व्यक्तिहरूलाई समान अधिकारको प्रत्याभूत गराएको छ र उनीहरूको यौन अभिमुखिकरणका आधारमा विभेद गर्न निषेध गरिएको छ।

तर पनि पूर्वाञ्चल विश्वविद्यालयको कानून संकायमा BALLB कार्यक्रमले समयौनिकतालाई अप्राकृतिक मैथुनको अन्तर्गत राखेर पठनपाठन गराउने गरेको छ। शिक्षाको क्षेत्रमा समयौनिक व्यक्तिहरू बारे यस्तो विभेदकारी र लाञ्छनायुक्त पाठ्यक्रम रहनाले यस कार्यक्रमका अध्यनरत व्यक्तिहरुमा समयौनिकता प्रति समाजमा व्यापक विभेदकारी र लाञ्छनायुक्त धारणालाई अझै सब्बल वा प्रोत्साहन गर्दछ भने यसले समयौनिक व्यक्तिहरू प्रति हुने हिंसालाई अझै तीव्र समेत बनाउने गर्दछ। उक्त विश्वविद्यालय अन्तरगतका क्याम्पसहरुमा यसै कार्यक्रममा अध्यनरत खुलेका वा नखुलेका (open or hidden) समयौनिक विद्यार्थीहरू पनि हुन सक्छन् । यस्तो पाठ्यक्रमहरूले ती विद्यार्थीहरूलाई अझै नकरात्मक रूपमा असर पुर्याउँछ।

तसर्थ हामी यस आयोगलाई राष्ट्रिय मानव अधिकार आयोग ऐन, २०६८ बमोजिम यस विषयमा अध्ययन गरि यथाशीघ्र देहायका निकायहरूलाई देहायका सिफारिस गर्नका लागि निवेदन गर्दछौँ :-

१) उक्त शैक्षिक कार्यक्रमको पाठ्यक्रमबाट समयौनिकतालाई अप्राकृतिक तुल्याई अप्राकृतिक मैथुन अन्तर्गत उल्लेख गरिएको Homosexuality, Lesbianism जस्ता शब्द र समयौनिकताको विषयलाई अप्राकृतिक



ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup



गृधेर·ष्टुघ·ग्रुप कृदाव ख्यव गुप +ĉIJI ⅃O ΛIL
क्वयेर यूथ ग्रुप ꯀꯨꯏꯌꯔ ꯌꯨꯊ ꯒ꯭ꯔꯨꯞ
क्वयेर युथ ग्रुप كُوييَر يُتھ گرُپ

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

मैथुन अन्तरगतबाट हटाउन एवं सो अनुसार आगामी शैक्षिक सत्र देखि पाठ्यक्रम सच्याउन / संसोधन गर्न भनि पूर्वाञ्चल विश्वविद्यालयको नाउँमा सिफारिस गरिपाउँ ।

२) पूर्वाञ्चल विश्वविद्यालय र कानून संकायको पठनपाठन हुने सबै आङ्गिक क्याम्पसहरूमा समयौनिकतालाई अप्राकृतिक तुल्याई पठनपाठन नगर्न नगराउन निर्देशन जारी गर्न गराउन शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालयको नाउँमा सिफारिस गरिपाउँ ।

३) समयौनिकता लगायत 'यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता अधिकार' (SOGIESC Rights) का विषयलाई छुट्टै पाठ्य विषयका रूपमा पाठ्यक्रममा विभेद र लाञ्छना रहित ढङ्गले समावेश गरि आगामी शैक्षिक सत्र देखि पाठ्यक्रम सच्याउन / संसोधन गर्न भनि पूर्वाञ्चल विश्वविद्यालयको नाउँमा सिफारिस गरिपाउँ ।

**संलग्न कागजात :-**

१) यस विषयमा शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालयलाई समेत बोधार्थ गरि पूर्वाञ्चल विश्वविद्यालयलाई यस संस्थाले गरेको पत्राचार

२) पूर्वाञ्चल विश्वविद्यालयको BALLB कार्यक्रमको पाठ्यक्रम

**भवदीय,**






रुक्शना कपाली

कार्यकारी निर्देशक

ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup